॥ श्री गणेशाय नमः ॥

ॐ

श्री परमात्मने नमः

॥ अथ दक्षस्मृतिः ॥

## ॥ अथ प्रथमोऽध्यायः ॥
## (पहिलो अध्याय)

**सर्वशास्त्रार्थतत्त्वज्ञः सर्ववेदविदां वरः ।**
**पारगः सर्वविद्यानां दक्षोनाम प्रजापतिः ॥१॥**

सबै शास्त्रका सम्बन्धमा सबै तत्व जान्ने भएका, सबै वेदका ज्ञातामध्येका श्रेष्ठ र सबै विद्यामा पोख्त दक्ष नाम गरिएका एक प्रजापति भए ।

**उत्पत्तिः प्रलयश्चैव स्थितिः संहार एव च ।**
**आत्मा चात्मनि तिष्ठेत आत्मा ब्रह्मण्यवस्थितः ॥२॥**

उत्पत्ति, प्रलय, स्थिति, संहार र सबै जीवको आत्मा उसैका आत्मामा समाहित थिए अनि उसको आफ्नै आत्मा भने स्वयं ब्रह्ममा समाहित थियो ।

**ब्रह्मचारी गृहस्थश्च वानप्रस्थो यतिस्तथा ।**
**एतेषां तु हितार्थाय दक्षः शास्त्रमकल्पयत् ॥३॥**

ब्रह्मचारी, गृहस्थ, वानप्रस्थ र सन्यासी-यी सबैको भलोका लागि दक्षले (यो) शास्त्रको रचना गरे ।

**जातमात्रः शिशुस्तावद्यावदष्टौ समा वयः ।**
**स हि गर्भसमो ज्ञेयो व्यक्तिमात्रप्रदर्शितः ॥४॥**

जबसम्म बालक आठ वर्षको हुन्छ तबसम्म उसलाई जन्मेको मात्र तथा गर्भसमान सम्झिनु पर्दछ । यस बेलासम्म त उसले आफ्नो प्रादुर्भाव मात्र दर्शाएको हुन्छ ।

**भक्ष्याभक्ष्ये तथा पेये वाच्यावाच्ये ऋतानृते ।**

**अस्मिन्बाले न दोषः स्यात्स यावन्नोपनीयते ॥५॥**

उपनयन नगर्दासम्म बालकलाई खान हुने-नहुने, पिउन हुने-नहुने, बोल्न हुने-नहुने र सत्य-असत्य आदिका विषयमा दोष लाग्दैन ।

**उपनीते तु दोषोऽस्ति क्रियमाणैर्विगर्हितैः ।**
**अप्राप्तव्यवहारोऽसौ यावत् षोडशवार्षिकः ॥६॥**

उपनयन भएपछि निन्दनीय कर्म गर्दा उसलाई दोष लाग्दछ तर उसले व्यवहार-कुशलता भने सोह्र वर्ष नपुगी प्राप्त गर्दैन ।

**स्वीकरोति यदा वेदं चरेद्वेदव्रतानि च ।**
**ब्रह्मचारी भवेत्तावदूर्ध्वं स्नातो भवेद्गृही ॥७॥**

वेदलाई अपनाएर वेदव्रतको आचरण गर्नेलाई ब्रह्मचारी भनिन्छ । त्यसपछि स्नातक भई गृहस्थ हुन जान्छ ।

**द्विविधो ब्रह्मचारी स्यादुपकुर्वाणको ह्यथ ।**
**द्वितीयो नैष्ठिकश्चैव तस्मिन्नेव व्रते स्थितः ॥८॥**

ब्रह्मचारी दुई किसिमका हुन्छन् : पहिलो वेदाध्ययन गर्दासम्मको (उपकुर्वाण) र दोश्रो आजीवन (नैष्ठिक) ।

**यो गृहाश्रममास्थाय ब्रह्मचारी भवेत्पुनः ।**
**न यतिर्न वनस्थश्च सर्वाश्रमविवर्जितः ॥९॥**

जो द्विज गृहस्थ भई पुनः ब्रह्मचारी हुन्छ, वानप्रस्थी र सन्यासी बन्दैन त्यस्तो ब्रह्मचर्याश्रमलाई सबै आश्रममध्येको हीन आश्रम मानिएको छ ।

**अनाश्रमी न तिष्ठेत दिनमेकमपि द्विजः ।**
**आश्रमेण विना तिष्ठन्प्रायश्चित्तीयते हि सः ॥१०॥**

द्विजले एक दिन पनि अनाश्रमी नरहनू । जो आश्रम बिना रहन्छ उ प्रायश्चित गर्न योग्य हुन्छ ।

**जपे होमे तथा दाने स्वाध्याये च रतः सदा ।**
**नासौ तत्फलमवाप्नोति कुर्वाणोऽप्याश्रमाच्च्युतः ॥११॥**

जो जप, होम, दान र स्वाध्यायमा लीन छ तर आश्रमहीन छ उसले यी सबै कर्म गरिरहँदा पनि त्यसको फल भने पाउँदैन ।

**त्रयाणामानुलोम्यं हि प्रातिलोम्यं न विद्यते ।**
**प्रातिलोम्येन यो याति न तस्मात्पापकृत्तमः ॥१२॥**

तीनै आश्रम (ब्रह्मचर्य, गृहस्थ र वानप्रस्थ) क्रमैले गर्नू । उल्टो उचित हुँदैन । उल्टो आचरण गर्नेभन्दा पापी अरु मानिस छैन ।

**मेखलाजिनदण्डैश्च ब्रह्मचारीति लक्ष्यते ।**
**गृहस्थो दानवेदाद्यैर्नखलोमैर्वनाश्रमी ॥१३॥**

ब्रह्मचारी आफ्नो कन्धनी, मृगचर्म र दण्डले; गृहस्थ दान र वेद आदिले र वानप्रस्थ नङ-रौं आदिले चिनिन्छ ।

**त्रिदण्डेन यतिश्चैव लक्षणानि पृथक् पृथक् ।**
**यस्यैतल्लक्षणं नास्ति प्रायश्चित्ती वनाश्रमी ॥१४॥**

सन्यासी त्रिदण्डले चिनिन्छ । यी सबैका लक्षण फरकफरक छन् । जसमा यी मध्ये कुनै एक लक्षण पनि छैन त्यो वनाश्रमी होइन । उ त प्रायश्चित गर्न योग्य हुन्छ ।

**उक्तं कर्म क्रमो नोक्तो न कालो मुनिभिः स्मृतः ।**
**द्विजानां च हितार्थाय दक्षस्तु स्वयमब्रवीत् ॥१५॥**

कर्मका विषयमा वर्णन गरियो ।(यसको) क्रम बताइएको छैन । मुनिजनबाट काल (समय) का बारेमा पनि बताइएको छैन । द्विजका हितका लागि स्वयं दक्षले यो कुरा भनेका छन् ।

॥ इति दाक्षे धर्मशास्त्रे प्रथमोऽध्यायः ॥१॥
॥ मोहन प्रसाद सापकोटाबाट दक्षस्मृतिको पहिलो अध्याय
नेपालीमा भावानुवाद गरेर सकिएको छ ॥



आदितः श्लोकानां समष्टयङ्काः-०+१५=१५
शुरुदेखिको श्लोक सङ्ख्या : १५

## ॥ अथ द्वितीयोऽध्यायः ॥
## (दोश्रो अध्याय)

**प्रातरुत्थाय कर्त्तव्यं यद् द्विजेन दिने दिने ।**
**तत्सर्वं संप्रवक्ष्यामि द्विजानामुपकारकम् ॥१॥**

दिनहुँ बिहान उठेर द्विजले जेजति कर्म गर्नुपर्दछ त्यो सबै तिनका उपकारका लागि म (अब) बताउनेछु ।

**उदयास्तमयं यावन्न विप्रः क्षणिको भवेत् ।**
**नित्यनैमित्तिकैर्युक्तः काम्यैश्चान्यैरगर्हितैः ॥२॥**

सूर्योदयदेखि सूर्यास्तसम्म एक छिन पनि ब्राह्मणले नित्य, नैमित्तिक तथा अन्य अनिन्दित कर्मबाट मुक्त हुनु हुन्न ।

**यः स्वकर्म परित्यज्य यदन्यत् कुरुते द्विजः ।**
**अज्ञानाद्यदि वा मोहात् स तेन पतितो भवेत् ॥३॥**

जो द्विज अज्ञान वा मोहले आफ्नो कर्मछोडी कुनै अरु कर्म गर्दछ उ त्यसले गर्दा पतित हुन्छ ।

**दिवसस्याद्यभागे तु कृत्यं तस्योपदिस्यते ।**
**द्वितीये च तृतीये च चतुर्थे पञ्चमे तथा ॥४॥**
**षष्ठे च सप्तमे चैव अष्टमे च पृथक् पृथक् ।**
**विभागेष्वेषु यत्कर्म तत्प्रवक्ष्याम्यशेषतः ॥५॥**

दिनको पहिलो, दोश्रो, तेश्रो, चौथो, पाँचौं, छैटौं, सातौं र आठौं प्रहरमा गर्नुपर्ने कर्मका बारेमा छुट्टाछुट्टै सबै उपदेश दिइने छ ।

**उषःकाले तु सम्प्राप्ते शौचं कृत्वा यथार्थवत् ।**
**ततः स्नानं प्रकुर्वीत दन्तधावनपूर्वकम् ॥६॥**

उषाकाल भएपछि ठीक तरिकाले शौच आदि गरी त्यसपछि दाँत माभ्रेर नुहाउनू ।

**अत्यन्तमलिनः कायो नवच्छिद्रसमन्वितः ।**
**स्रवत्येष दिवारात्रौ प्रातः स्नानं विशोधनम् ॥७॥**

शरीर नौ छिद्रयुक्त हुनाले अत्यन्त मलिन छ । यसबाट दिनरात मल बगिरहन्छ । बिहानको नुहाइ यसकै शुद्धिका लागि हो ।

**क्लिद्यन्ति हि प्रसुप्तस्य इन्द्रियाणि स्रवन्ति च ।**
**अङ्गानि समतां यान्ति उत्तमान्यधमैः सह ॥८॥**

सुत्दा इन्द्रियहरु भिजी फोहोर बगाइ रहन्छन् । उत्तम अङ्ग पनि अधम अङ्गको भैँ गरी फोहोर हुन्छन् ।

**नानास्वेदसमाकीर्णः शयनादुत्थितः पुमान् ।**
**अस्नात्वा नाचरेत्कर्म जपहोमादि किञ्चन ॥९॥**

अनेक प्रकारका पसिनाले ओतप्रोत मानिस बिछ्यौनाबाट उठेर ननुहाई जपहोम आदि कर्म नगरून् ।

**प्रातरुत्थाय यो विप्रः प्रातःस्नायी भवेत् सदा ।**
**समस्तजन्मजं पापं त्रिभिर्वर्षैर्व्यपोहति ॥१०॥**

जो ब्राह्मण बिहान उठेर सधैं नुहाउँदछ, उसले सबै जन्मका पाप तीन वर्षमै हटाउँदछ वा कटाउँदछ ।

**उषस्युषसि यत् स्नानं सन्ध्यायामुदिते रवौ ।**
**प्राजापत्येन तत्तुल्यं महापातकनाशनम् ॥११॥**

उषाकालमा उठेर सन्ध्याकालमा सूर्योदयका समयमा गरिने स्नान प्राजापत्य व्रत समान र महापाप नाशक हुन्छ ।

**प्रातःस्नानं प्रशंसन्ति दृष्टादृष्टकरं हि तत् ।**

**सर्वमर्हति पूतात्मा प्रातःस्नायी जपादिकम् ॥१२॥**

देखिने नदेखिने सबै उद्देश्य सिद्ध गर्ने प्रातःस्नानलाई सबै मुनिजन प्रशंसा गर्दछन् । प्रातःस्नान गर्ने पवित्र आत्मा भएको मनुष्य जप आदि कर्मका लागि योग्य हुन्छ ।

**स्नानादनन्तरं तावदुपस्पर्शनमुच्यते ।**
**अनेन तु विधानेन आचान्तः शुचितामियात् ॥१३॥**

नुहाए पछि आचमन गर्नुपर्ने बताइएको छ । यो (तलको) विधिले आचमन गर्ने मानिस पवित्र हुन्छ ।

**प्रक्षाल्य पादौ हस्तौ च त्रिः पिबेदम्बु वीक्षितम् ।**
**संवृत्याङ्गुष्ठमूलेन द्विः प्रमृज्यात्ततो मुखम् ॥१४॥**

दुवै गोडा र हात धोई बूढी औंलाको मूल भाग केही खुम्च्याई राम्ररी हेरिएको जललाई तीन पटक पिउनू र त्यसपछि दुई पटक मुख पुछ्नू ।

**संहत्य तिसृभिः पूर्वमास्यमेवमुपस्पृशेत् ।**
**ततः पादौ समभ्युक्ष्य अङ्गानि समुपस्पृशेत् ॥१५॥**

तीन औंला मिलाएर पहिले मुख नै छुनू । त्यसपछि दुबै गोडा भिजाएर अङ्गहरु स्पर्श गर्नू ।

**अङ्गुष्ठेन प्रदेशिन्या घ्राणं पश्चादनन्तरम् ।**
**अङ्गुष्ठानामिकाभ्याञ्च चक्षुःश्रोत्रे पुनः पुनः ॥१६॥**

त्यसपछि तुरुन्तै बूढी र चोर औंलाले नाक छुनू । त्यसपछि बूढी र साँहिली औंलाले पटकपटक आँखा र नाक छुनू ।

**कनिष्ठाङ्गुष्ठया नाभिं हृदयञ्च तलेन वै ।**
**सर्व्वाभिस्तु शिरः पश्चाद्बाहू चाग्रेण संस्पृशेत् ॥१७॥**

नाइटोलाई बूढी र चोर औंलाले तथा हृदयलाई हत्केलाले छुनू । त्यसपछि सबै औंलाले शिर छुनू र दुवै पाखुरालाई हातको टुप्पाले छुनू ।

सन्ध्यायाञ्च प्रभाते च मध्याह्ने च ततः पुनः ।
सन्ध्यां नोपासते यस्तु ब्राह्मणो हि विशेषतः ॥१८॥
स जीवन्नेव शूद्रः स्यान्मृतः श्वा चैव जायते ।
सन्ध्याहीनोशुचिर्नित्यमनर्हः सर्वकर्मसु ॥
यदन्यत् कुरुते कर्म न तस्य फलमश्नुते ॥१९॥

साँझ, बिहान र मध्याह्नमा जो मानिस अझ विशेष गरी ब्राह्मण सन्ध्योपासना गर्दैन उ जीवितै शूद्र हुन्छ र मरे पछि कुकुर हुन्छ । सन्ध्याहीन मानिस नित्य अपवित्र हुन्छ र सबैथरी शुभकर्मका लागि अयोग्य हुन्छ । गरेका कर्मको पनि फल पाउँदैन ।

सन्ध्याकर्मावसाने तु स्वयं होमो विधीयते ।
स्वयं होमे फलं यत्तु तदन्येन न जायते ॥२०॥

सन्ध्याकर्म सकिए पछि आफैं होम गर्ने विधान छ । आफैंले गरेको होमले पाइने फल अरुबाट गराइने होमले पाईँदैन ।

ऋत्विक् पुत्रो गुरुर्भ्राता भागिनेयोऽथ विट्पतिः ।
एभिरेव हुतं यत्तु तद्धुतं स्वयमेव हि ॥२१॥

ऋत्विज, पुत्र, गुरु, भाई, भानिज र ज्वाईं-यी मार्फत गरिने होम पनि आफैंले गरेको होम नै हुन्छ ।

देवकार्यस्य सर्वस्य पूर्वाह्णस्तु विधीयते ।
देवकार्य्यं ततः कृत्वा गुरुमङ्गलवीक्षणम् ॥२२॥

सबै देवकर्म गर्न पूर्वाह्नको समय तोकिएको छ । (बिहान) देवपूजा आदि कर्म गरी गुरु एवं गाई आदि मङ्गलकारी वस्तुको दर्शन गर्नू ।

देवकार्याणि पूर्वाह्णे मनुष्याणाञ्च मध्यमे ।
पितृणामपराह्णे च कार्य्याण्येतानि यत्नतः ॥२३॥

देवतासम्बन्धी सबै कर्म पूर्वाह्नमा, मनुष्यसम्बन्धी कर्म मध्याह्नमा र पितृसम्बन्धी सबै कर्म अपराह्नमा प्रयासपूर्वक गरिनु पर्दछ ।

**पौर्व्वाह्णिकन्तु यत् कर्म यदि तत् सायमाचरेत् ।**
**न तस्य फलमाप्नोति वन्ध्यस्त्री मैथुनं यथा ॥२४॥**

जसरी बाँझी स्त्रीबाट पुत्ररुपी फल पाइँदैन त्यसरी नै दिनको पूर्व भागमा गर्नुपर्ने कर्म साँझमा गरिए त्यसको फल पाइँदैन ।

**दिवसस्याद्यभागे तु सर्वमेतद्विधीयते ।**
**द्वितीये च तथा भागे वेदाभ्यासो विधीयते ॥२५॥**

यी सबै (शौच,स्नान,जप,होम) दिनको पहिलो भागमा गर्ने विधान छ भने दिनको दोश्रो भागमा वेदाभ्यास गर्ने विधान गरिएको छ ।

**वेदाभ्यासो हि विप्राणां परमं परमं तप उच्यते ।**
**ब्रह्मयज्ञः स विज्ञेयः षडङ्गसहितस्तु सः ॥२६॥**

वेदाभ्यास नै ब्राह्मणका लागि परम तप भनिएको छ । यसलाई ब्रह्मयज्ञ (पनि) भनिन्छ । यसलाई छ अङ्ग सहित गरिनु पर्दछ ।

**वेदस्वीकरणं पूर्वं विचारोऽभ्यसनं जपः ।**
**ततो दानञ्च शिष्येभ्यो वेदाभ्यासो हि पञ्चधा ॥२७॥**

वेदाभ्यास पाँच प्रकारको छ-पहिले ज्ञान पाउनू, त्यसपछि मनन गर्नू, त्यसलाई दोहोऱ्याउनू, जप्नू र शिष्यलाई दिनू ।

**समित्पुष्पकुशादीनां स कालः समुदाहृतः ।**
**तृतीये चैव भागे तु पोष्यवर्गार्थसाधनम् ॥२८॥**

समिधा, कुश, फूल आदिका लागि पनि यही समय बताइएको छ । दिनको तेश्रो भागमा पोष्यवर्गको कार्य साधन गरिन्छ ।

**पिता माता गुरुर्भार्या प्रजा दीनाः समाश्रिताः ।**
**अभ्यागतोऽतिथिश्चान्यः पोष्यवर्ग उदाहृतः ॥२९॥**

पिता, माता, गुरुजन, पत्नी, सन्तान, दुःखी, शरणमा आएका, पाहुना र अतिथि-यिनलाई पोष्यवर्ग भनिएको छ ।

**ज्ञातिर्बन्धुजनः क्षीणस्तथानाथः समाश्रितः ।**
**अन्येऽप्यधनयुक्ताश्च पोष्यवर्ग उदाहृतः ॥३०॥**

नातेदार, बन्धुबान्धव, कमजोर, अनाथ, आश्रयमा आउने र अरु धनहीनलाई पनि पोष्यवर्ग बताइएको छ ।

**भरणं पोष्यवर्गस्य प्रशस्तं स्वर्गसाधनम् ।**
**नरकं पीडने चास्य तस्माद्यत्नेन तं भरेत् ॥३१॥**

पोष्यवर्गको भरण-पोषणलाई स्वर्ग पाउने उत्तम साधन भनिएको छ । यिनलाई पीडा दिए नरक पाइन्छ । यसैले प्रयत्नपूर्वक यिनको भरण-पोषण गर्नू ।

**सार्वभौतिकमन्नाद्यं कर्त्तव्यन्तु विशेषतः ।**
**ज्ञानविद्भ्यः प्रदातव्यमन्यथा नरकं व्रजेत् ॥३२॥**

सबै प्राणीका लागि अन्नादिको विशेषरूपले जोरजाम गर्नू र ज्ञानीहरुलाई पनि खान दिनू । अन्यथा मानिस नरकमा पर्दछ ।

**स जीवति य एवैको बुहुभिश्चोपजीव्यते ।**
**जीवन्तो मृतकाश्चान्ये य आत्मम्भरयो नराः ॥३३॥**

वास्तविकरूपमा त त्यो नै बँचेको हुन्छ जो एक्लै बाँच्दा पनि अरु धेरै बाँचिरहेका हुन्छन् । अरु त बँचे पनि मरेतुल्य हुन् जो मात्र आफ्नो पेट भर्नका लागि बँचेका हुन्छन् ।

**बह्वर्थे जीव्यते कैश्चित् कुटुम्बार्थे तथा परैः ।**
**आत्मार्थेऽन्यो न शक्नोति स्वोदरेणापि दुःखितः ॥३४॥**

कोही धेरैका लागि बाँचिएका हुन्छन्, कोही आफ्नो परिवारका लागि बाँचिएका हुन्छन् त कोही अरु कसैका लागि, कोही भने त्यस्ता दुःखी पनि छन् जो आफ्नो पेट पनि भर्न सक्दैनन् ।

**दीनानाथविशिष्टेभ्यो दातव्यं भूतिमिच्छता ।**

अदत्तदाना जायन्ते परभाग्योपजीविनः ॥३५॥

राम्रो चाहनेले दीन, अनाथ र विशिष्ट जनलाई दान दिनुपर्दछ । जो अरुलाई खुवाउँदैन त्यो अर्काको भाग्यको सहायताले बाँच्ने भई जन्मन्छ ।

यद्ददाति विशिष्टेभ्यो यज्जुहोति दिने दिने ।
तत्तु वित्तमहं मन्ये शेषं कस्यापि रक्षति ॥३६॥

विशिष्ट जनलाई जुन दान दिइन्छ वा दिनहुँ जे होमिन्छ म त्यसलाई नै धन मान्दछु बाँकीले त अरु कसैका लागि धन जोगाएर राखेका हुन्छन् ।

चतुर्थे च तथा भागे स्नानार्थं मृदमाहरेत् ।
तिलपुष्पकुशादीनि स्नानञ्चाकृत्रिमे जले ॥३७॥

दिनको चौथो भागमा नुहाउनका लागि माटो, तिल, फूल, कुश आदि ल्याउनू र प्राकृतिक जलमा नुहाउनू ।

नित्यं नैमित्तिकं काम्यं त्रिविधं स्नानमुच्यते ।
तेषां मध्ये तु यन्नित्यं तत्पुनर्भिद्यते त्रिधा ॥३८॥

नित्य, नैमित्तिक र काम्य गरी तीन प्रकारका स्नान बताइएको छ । त्यसमध्ये पनि जो नित्य स्नान छ त्यो तीन प्रकारको हुन्छ ।

मलापहरणं पश्चान्मन्त्रवत्तु जले स्मृतम् ।
सन्ध्यास्नानमुभाभ्याञ्चस्नानभेदाः प्रकीर्तिताः ॥३९॥

मैलो निखार्न गरिने, जलभित्र मन्त्र पढ्दै गरिने र दुवै सन्ध्यामा गरिने सन्ध्यास्नान गरी तीन थरी स्नान बताइएको छ ।

मार्जनं जलमध्ये तु प्राणायामो यतस्ततः ।
उपस्थानं ततः पश्चात् सावित्र्या जप उच्यते ॥४०॥

जलभित्र मार्जन, जल वा स्थलमा प्राणायाम, त्यसपछि (सूर्यको) स्तुति र त्यसपछि गायत्री जप गर्ने विधान बताइएको छ ।

सविता देवता यस्या मुखमग्निस्त्रिधा स्थितः ।
विश्वामित्र ऋषिश्छन्दो गायत्री सा विशिष्यते ॥४१॥

सविता जसका देवता हुन्, तीन भागमा बाँडिएका अग्नि जसको मुख हो, विश्वामित्र जसका ऋषि हुन्, गायत्री जसको छन्द हो त्यो ऋचा नै सर्वोत्तम ऋचा हो ।

पञ्चमे च तथा भागे सम्विभागो यथार्हतः ।
पितृदेवमनुष्याणां कीटानाञ्चोपदिश्यते ॥४२॥

दिनको पाँचौं भागमा यथायोग्य तरिकाले पितृ, देवता, मानिस र कीरा आदिका लागि भोजन भाग लगाउने उपदेश दिइएको छ ।

देवैश्चैव मनुष्यैश्च तिर्यग्भिश्चोपजीव्यते ।
गृहस्थः प्रत्यहं यस्मात्तस्माज्ज्येष्ठाश्रमी गृही ॥४३॥

देवता, मानिस, र पशुपंक्षी आदि तिर्यक् योनीद्वारा गृहस्थको अन्न भोगिने हुनाले गृहस्थलाई ज्येष्ठाश्रमी भनिन्छ ।

त्रयाणामाश्रमाणान्तु गृहस्थो योनिरुच्यते ।
तेनैव सीदमानेन सीदन्तीहेतरे त्रयः ॥४४॥

गृहस्थ (बाँकी) तीनै आश्रमको योनि भनिएको छ । त्यो नष्ट हुँदा बाँकी तीनै आश्रम पनि नष्ट हुन्छन् ।

मूलप्राणो भवेत् स्कन्धः स्कन्धाच्छाखाःसपल्लवाः ।
मूलेनैव विनष्टेन सर्वमेतद्विनश्यति ॥४५॥

रुखको ज्यान जरामा हुन्छ, जराबाट नै पालुवा सहितका हाँगा बाँचेका हुन्छन् । जरा मरे सारा रुख नै मर्दछ ।

तस्मात् सर्वप्रयत्नेन रक्षितव्यो गृहाश्रमी ।
राज्ञा चान्यैस्त्रिभिः पूज्यो माननीयश्च सर्वदा ॥४६॥

त्यसैले सबै थरीको प्रयासले गृहस्थको रक्षा हुनु पर्दछ । उ राजा र अरु आश्रमीबाट सधैं पूजनीय र माननीय हुन्छ ।

**गृहस्थोऽपि क्रियायुक्तो न गृहेण गृहाश्रमी ।**
**न चैव पुत्रदारेण स्वकर्मपरिवर्जितः ॥४७॥**

आफूले गर्नुपर्ने कर्ममा लागेको गृहस्थ नै गृहाश्रमी हुन्छ । कर्महीन गृहस्थ घरमा बसेर मात्र अथवा पुत्र र पत्नीले सहित हुँदैमा मात्र गृहस्थाश्रमी हुँदैन ।

**अस्नात्वा चाप्यहुत्वा चाजप्त्वाऽदत्त्वा च मानवः ।**
**देवादीनामृणी भूत्वा नरकं प्रतिपद्यते ॥४८॥**

स्नान, हवन, जप तथा दान नगर्ने मनुष्य देवताको ऋणी भई नरकमा पर्दछ ।

**एक एव हि भुङ्क्तेऽन्नमपरोऽन्नेन भुज्यते ।**
**न भुज्यते स एवैको यो भुङ्क्तेऽन्नं ससाक्षिणा ॥४९॥**

कोही अन्नलाई खान्छन् कोही अन्नबाट खाइन्छन् । त्यो एक्लै अन्नबाट खाइँदैन जो अरुलाई साथमा लिई अन्न खान्छ ।

**विभागशीलो यो नित्यं क्षमायुक्तो दयापरः ।**
**देवतातिथिभक्तश्च गृहस्थः स तु धार्मिकः ॥५०॥**

जो सधैं बाँडेर खान्छ, क्षमाशील छ, दयावान छ एवं देवता र अतिथिको भक्त छ त्यो गृहस्थ धार्मिक गृहस्थ हो ।

**दया लज्जा क्षमा श्रद्धा प्रज्ञा योगः कृतज्ञता ।**
**एते यस्य गुणाः सन्ति स गृही मुख्य उच्यते ॥५१॥**

दया, लज्जा, क्षमा, श्रद्धा, बुद्धि, योग र कृतज्ञताका गुण जसका साथमा छन् त्यसैलाई उत्तम गृहस्थी भनिन्छ ।

**संविभागं ततः कृत्वा गृहस्थः शेषभुग्भवेत् ।**
**भुक्त्वा तु सुखमास्थाय तदन्नं परिणामयेत् ॥५२॥**

यसैले गृहस्थले भोजन भाग लगाई अरुलाई दिएर आफू बाँकी खाऊन् । खाएर आराममले बसी खाएको पचाऊन् ।

**इतिहासपुराणाद्यैः षष्ठञ्च सप्तमं नयेत् ।**
**अष्टमे लोकयात्रा तु बहिः सन्ध्या ततः पुनः ॥५३॥**

दिनको छैटौँ र सातौँ भाग इतिहास-पुराणको अध्ययनमा बिताउनू । आठौँ भागमा जीविकाको कार्य गर्नू र फेरी बाहिर गई साँझको सन्ध्योपासना गर्नू ।

**होमो भोजनकञ्चैव यच्चान्यद् गृहकृत्यकम् ।**
**कृत्वा चैवं ततः पश्चात् स्वाध्यायं किञ्चिदाहरेत् ॥५४॥**

होम र भोजन तथा घरका अन्य कार्य यसरी गरेपछि स्वाध्याय गर्नू ।

**प्रदोषपश्चिमौ यामौ वेदाभ्यासेन तौ नयेत् ।**
**यामद्वयं शयानो हि ब्रह्मभूयाय कल्पते ॥५५॥**

रात परेपछि अगिल्ला दुई प्रहर वेदाभ्यासमा बिताउनू, त्यसपछिका दुई प्रहर सुतेर बिताउने मानिस ब्रह्मलाई प्राप्त गर्न समर्थ हुन्छ ।

**नैमित्तिकानि काम्यानि निपतन्ति यथा यथा ।**
**तथा तथैव कार्याणि न कालस्तु विधीयते ॥५६॥**

नैमित्तिक र काम्य कर्म जबजब आइपर्दछन् तबतब गरिनु पर्दछ । तिनका लागि निश्चित समयको विधान छैन ।

**अस्मिन्नेव प्रयुञ्जानो ह्यस्मिन्नेव तु लीयते ।**
**तस्मात् सर्वप्रयत्नेन कर्त्तव्यं सुखमिच्छता ॥५७॥**

यस संसारमा सबै थरी कर्म गर्दै मनुष्य अन्तमा यसैमा मृत्यु प्राप्त गर्दछ । अतः सुख चाहनेले सबै प्रयासबाट आफ्नो कर्म गर्नु पर्दछ ।

**सर्वत्र मध्यमौ यामौ हुतशेषं हविश्च यत् ।**

**भुञ्जानश्च शयानश्च ब्राह्मणो नावसीदति ॥५८॥**

सबै कर्मका लागि मध्यम प्रहर उत्तम हुन्छ । होम हालेपछि जे बाँकी हुन्छ त्यो खाँदै ठीक समयमा सुत्ने ब्राह्मण विनाशमा पुग्दैन ।

॥ इति दाक्षे धर्मशास्त्रे द्वितीयोऽध्यायः ॥२॥
॥ मोहन प्रसाद सापकोटाबाट दक्षस्मृतिको दोश्रो अध्याय
नेपालीमा भावानुवाद गरेर सकिएको छ ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-१५+५८=७३
शुरुदेखिको श्लोक सङ्ख्या : ७३

## ॥ अथ तृतीयोऽध्यायः ॥
## (तेश्रो अध्याय)

**सुधा नव गृहस्थस्य ईषद्दानानि वै नव ।**
**तथैव नव कर्माणि विकर्माणि तथा नव ॥१॥**

गृहस्थका नौ वटा सुधा, नौ वटा ईषद्दान त्यस्तै प्रकारले नौ वटा उत्तम कर्म र नौ वटा निकृष्ट कर्म छन् ।

**प्रच्छन्नानि नवान्यानि प्रकाश्यानि तथा नव ।**
**सफलानि नवान्यानि निष्फलानि नवैव तु ॥२॥**

अन्य नौ वटा कर्म लुकाउन योग्य, नौ वटा बताउन योग्य, नौ वटा कर्म सफल र नौ वटा नै कर्म असफल कर्म भनी बताइएको छ ।

**अदेयानि नवान्यानि वस्तुजातानि सर्वदा ।**
**नवका नव निर्दिष्टा गृहस्थोन्नतिकारकाः ॥३॥**

नौ वटा वस्तु कहिल्यै पनि दिन योग्य हुँदैन । यी नौ वटा नौको समूहले गृहस्थको उन्नति गर्ने बताइएको छ ।

सुधावस्तूनि वक्ष्यामि विशिष्टे गृहमागते ।
मनश्चक्षुर्मुखं वाचं सौम्यं दद्याच्चतुष्टयम् ॥४॥
अभ्युत्थानमिहागच्छ पृच्छलापप्रियान्वितः ।
उपासनमनुव्रज्या कार्याण्येतानि यत्नतः ॥५॥

नौ सुधा वस्तुको वर्णन गर्दछु-विशिष्ट व्यक्ति घरमा आउँदा (१) मन, (२) आँखा, (३) मुख र (४) राम्रो बोली उतिर लगाउनू । (५) उठ्नू, उसलाई (६)यता आउनुहोस् भन्नू, उसका (७) नजिकै बस्नू, (८) उ आउनाको कारण सोधी उसँग मीठो वचनले कुराकानी गर्नू र (९) उ जब उठेर जान्छ केही परसम्म उसका पछिपछि उसलाई पुऱ्याउन जानू । यी नौ कर्म यत्नपूर्वक गर्नु पर्दछ ।

ईषद्दानानि चान्यानि भूमिरापस्तृणानि च ।
पादशौचं तथाभ्यङ्गमाश्रयः शयनन्तथा ॥६॥
किञ्चिच्चान्नं यथाशक्ति नास्यानश्नन् गृहे वसेत् ।
मृज्जलं चार्थिने देयमेतान्यपि सदा गृहे ॥७॥

दिनका लागि योग्य ९ सानातिना कुरा हुन्-(१) जमिन(बस्न), (२) जल, (३) आसन, (४) गोडा धुन पानी, (५) मालिशका सामान, (६) बस्ने स्थान, (७) सुत्न ओछ्यान, (८) शक्ति अनुसारको भोजन किनकि नखाई उ त्यो घरमा बस्न सक्दैन र (९) माग्दा शौच आदिका लागि माटो र पानी । यी सबै कुरा घरमै पाइन्छन् ।

सन्ध्या स्नानं जपो होमः स्वाध्यायो देवतार्चनम् ।
वैश्वदेवं तथातिथ्यमुद्धृतञ्चापि शक्तितः ॥८॥
पितृदेवमनुष्याणां दीनानाथतपस्विनाम् ।
मातापितृगुरूणाञ्च संविभागो यथार्हतः ॥९॥
एतानि नव कर्माणि विकर्माणि तथा पुनः ।
अनृतं पारदार्यञ्च तथाऽभक्ष्यस्य भक्षणम् ॥१०॥
अगम्यागमनापेयपानः स्तेयञ्च हिंसनम् ।
अश्रौतकर्माचरणं मित्रधर्मबहिष्कृतम् ॥११॥
नवैतानि विकर्माणि तानि सर्वाणि वर्जयेत् ।
आयुर्वित्तं गृहच्छिद्रं मन्त्रमैथुनभैषजम् ॥१२॥
तपो दानावमानौ च नव गोप्यानि यत्नतः ।
आरोग्यमृणशुद्धिश्च दानाध्ययनविक्रयाः ॥१३॥

**कन्यादानं वृषोत्सर्गो रहः पापमकुत्सनम् ।**
**प्रकाश्यानि नवैतानि गृहस्थाश्रमिणस्तथा ॥१४॥**

(१) सन्ध्योपासना, (२) स्नान, (३) जप, (४) होम, (५) स्वाध्याय, (६) देवपूजा, (७) वैश्वदेव यज्ञ, (८) अतिथिपूजा र (९) शक्ति अनुसार पकाइएको भोजनकलाई पितृ, देवता, मानिस, दु:खी, अनाथ, तपस्वी, माता, पिता तथा गुरुजनलाई यथोचित भाग लगाउनू-यी नौ उत्तम कर्म हुन् । यसैगरी नौ निकृष्ट कर्म हुन्-(१) झुटो बोल्नू, (२) परस्त्रीसँग सम्बन्ध राख्नू, (३) खान नहुने कुरा खानू, (४) गमन गर्न नहुने स्त्रीलाई गमन गर्नू, (५) पिउन नहुने कुरा पिउनू, (६) चोरी गर्नू, (७) हिंसा गर्नू, (८) वेदविरोधी कर्म गर्नू र (९) मित्र-धर्म त्याग्नू । यी नौ निन्दनीय कर्म हुन् र यिनलाई छोड्नु । (१) आयु, (२) धन, (३) आफ्नो घरको दोष, (४) मन्त्र, (५) मैथुन, (६) औषधीमूलो, (७) तप, (८) दान र (९) अपमान-यी नौ कुरा प्रयासपूर्वक गोप्य राख्न योग्य हुन्छन् । गृहस्थाश्रमीले (१) आरोग्यको प्राप्ति, (२) ऋणको भुक्तान, (३) दान, (४) अध्ययन, (५) बेचेको कुरा, (६) कन्यादान, (७) वृषोत्सर्ग, (८) एकान्तमा गरेको पाप र (९) अनिन्दनीय कर्मको प्रकाशन-यी नौ कुरा सबैका सामु गर्नु पर्दछ ।

**मातापित्रोर्गुरौ मित्रे विनीते चोपकारिणि ।**
**दीनानाथविशिष्टेभ्यो दत्तन्तु सफलं भवेत् ॥१५॥**

माता, पिता, गुरु, मित्र, विनीत, उपकारी, दीन, अनाथ र विशिष्ट व्यक्तिलाई दिइएको दान सफल हुन्छ ।

**धूर्ते वन्दिनि मन्दे च कुवैद्ये कितवे शठे ।**
**चाटुचारणचौरेभ्यो दत्तं भवति निष्फलम् ॥१६॥**

धूर्त, बन्दी, मन्दबुद्धि, कुवैद्य, जुवाडे, शठ, चापलुस, भाट र चोरलाई दिइएको दान निष्फल हुन्छ ।

**सामान्यं याचितं न्यास आधिर्दाराश्च तद्धनम् ।**
**क्रमायातञ्च निक्षेपः सर्वस्वञ्चान्वये सति ॥१७॥**
**आपत्स्वपि न देयानि नव वस्तूनि सर्वदा ।**
**यो ददाति स मूढात्मा प्रायश्चित्तीयते नरः ॥१८॥**

(१) सामान्य धन, (२) माँगिएको धन, (३) नासो, (४) कोष, (५) पत्नी, (६) स्त्रीधन, (७) पुर्ख्यौली धन, (८) निक्षेप र (९) सन्तान हुँदाहुँदै सर्वस्व-यि नौ कुरा विपत्ति आउँदा पनि कहिल्यै दिनु हुँदैन । जो दिन्छ त्यो मूर्ख मानिसले प्रायश्चित गर्नु पर्ने हुन्छ ।

**नवनवकवेत्तारमनुष्ठानपरं नरम् ।**
**इह लोके परे च श्रीः स्वर्गस्थश्च न मुञ्चति ॥१९॥**

यी एकासी कुरालाई जान्ने र यिसँग सम्बन्धित अनुष्ठानादि गर्ने मानिसलाई श्रीले यस लोक र स्वर्गलोकमा पनि छोड्दिनन् ।

**यथैवात्मा परस्तद्वद् द्रष्टव्यः सुखमिच्छता ।**
**सुखदुःखानि तुल्यानि यथात्मनि तथा परे ॥२०॥**

सुख चाहनेले अरुलाई पनि त्यसरी नै हेर्नु जसरी स्वयं उ आफूलाई हेर्दछ । सुखदुःख सबैका लागि समान हुन्छ । जस्तो आफूलाई अनुभव हुन्छ त्यस्तै अरुलाई पनि अनुभव हुन्छ ।

**सुखं वा यदि वा दुःखं यत्किञ्चित् क्रियते परे ।**
**ततस्तत्तु पुनः पश्चात् सर्वमात्मनि जायते ॥२१॥**

सुखदुःख जे कुरा अरुका लागि गरिन्छ त्यो पूरापूर केही समय पछि फेरी गर्नेको भित्र उपन्न हुन्छ ।

**न क्लेशेन विना द्रव्यं द्रव्यहीने कुतः क्रिया ।**
**क्रियाहीने न धर्मः स्याद्धर्महीने कुतः सुखम् ॥२२॥**

दुःख नगरी धन पाइँदैन, धन नभई कर्म कसरी हुन्छ ? जो कर्महीन छन् तिनले धर्म कमाउन सक्दैनन् र धर्महीन मानिसलाई सुख कहाँ हुन्छ ? ।

**सुखं वाञ्छति सर्वे हि तच्च धर्मसमुद्भवम् ।**
**तस्माद्धर्मः सदा कार्यः सर्ववर्णैः प्रयत्नतः ॥२३॥**

सबै सुख चाहन्छन् र त्यो सुख धर्मले उत्पन्न हुन्छ, यसैले सबै वर्णले प्रयत्नपूर्वक धर्म गर्नु पर्दछ ।

**न्यायागतेन द्रव्येण कर्तव्यं पारलौकिकम् ।**
**दानञ्च विधिना देयं काले पात्रे गुणान्विते ॥२४॥**

न्यायले आर्जित धनले श्राद्धादि पारलौकिक कर्म गर्नू । दान उचित समयमा गुणी पात्रलाई विधिपूर्वक दिनू ।

**समद्विगुणसाहस्रमानन्त्यञ्च यथाक्रमम् ।**
**दाने फलविशेषः स्याद्धिंसायां तावदेव तु ॥२५॥**

दान दिँदा (पात्र अनुसार) क्रमैले बराबर, दोबर, हजार गुना र अनन्त फलविशेष पाइन्छ । हिंसा गर्दा पनि (यसैगरी) फल पाइन्छ ।

**समब्राह्मणे दानं द्विगुणं ब्राह्मणब्रुवे ।**
**सहस्रगुणमाचार्ये त्वनन्तं वेदपारगे ॥२६॥**

अब्राह्मणलाई दिँदा बराबर, नाम मात्रको ब्राह्मणलाई  दिँदा दोबर, आचार्यलाई दिँदा हजार गुना र वेदपारङ्गत ब्राह्मणलाई दान दिँदा अनन्त फल पाइन्छ ।

**विधिहीने तथा पात्रे यो ददाति प्रतिग्रहम् ।**
**न केवलं तद्विनश्येच्छेषमप्यस्य नश्यति ॥२७॥**

विधिहीन पात्रलाई जसले दान दिन्छ, त्यसको त्यो दान दिइएको धन मात्र नभई बाँकी धन पनि नष्ट हुन्छ ।

**व्यसनप्रतिकाराय कुटुम्बार्थञ्च याचते ।**
**एवमन्विष्य दातव्यमन्यथा न फलं भवेत् ॥२८॥**

सङ्कट टार्न वा परिवार पाल्न जसले माग्दछ त्यो मानिसले खोजीखोजी दान दिनू नत्र दानको फल पाइँदैन ।

**मातापितृविहीनन्तु संस्कारोद्वहनादिभिः ।**
**यः स्थापयति तस्येह पुण्यसंख्या न विद्यते ॥२९॥**

टुहुराको जसले संस्कार गराएर जीवनमा स्थापित गराउँदछ यस लोकमा उसको पुण्यको गणना गर्न सकिँदैन ।

तच्छ्रेयोऽग्निहोत्रेण नाग्निष्टोमेन लभ्यते ।
यच्छ्रेयः प्राप्यते पुंसा विप्रेण स्थापितेन तु ॥३०॥

ब्राह्मणलाई जीवनमा स्थापित गर्नाले जुन कल्याण पाइन्छ त्यो कल्याण अग्निहोत्र वा अग्निष्टोमले पनि पाइँदैन ।

यद्यदिष्टतमं लोके यच्चापि दयितं गृहे ।
तत्तद्गुणवते देयं तदेवाक्षयमिच्छता ॥३१॥

संसारका उत्तम वस्तु र घरका प्रिय वस्तु जे छन् अक्षय चाहनेले त्यो त्यो वस्तु गुणवानलाई दानमा दिनु पर्दछ ।

॥ इति दाक्षे धर्मशास्त्रे तृतीयोऽध्यायः ॥३॥
॥ मोहन प्रसाद सापकोटाबाट दक्षस्मृतिको तेश्रो अध्याय
नेपालीमा भावानुवाद गरेर सकिएको छ ॥

आदितः श्लोकानां समष्टयङ्काः-७३+३१=१०४
शुरुदेखिको श्लोक सङ्ख्या : १०४

## ॥ अथ चतुर्थोऽध्यायः ॥
## (चौथो अध्याय)

पत्नीमूलं गृहं पुंसां यदिच्छन्दोऽनुवर्तिनी ।
गृहाश्रमसमं नास्ति यदि भार्य्या वशानुगा ॥१॥

यदि पतिको इच्छा अनुसार आचरण गर्दछे भने पुरुषको घरको आधार पत्नी हो । पत्नी पतिको वशमा छे भने गृहस्थाश्रम बराबर (उत्कृष्ट) कुनै आश्रम छैन ।

तया धर्मार्थकामानां त्रिवर्गफलमश्नुते ।
प्राकाम्ये वर्त्तमाना तु स्नेहान्न तु निवारिता ॥२॥

उनी मार्फत धर्म, अर्थ र काम यी त्रिवर्गको फल पाइन्छ । पत्नी स्वेच्छाचारिणी भएर पनि मायाले गर्दा पति उनलाई रोक्दैन भने ...।

**अवश्या सा भवेत् पश्चाद् यथा व्याधिरुपेक्षितः ।**
**अनुकूला न वाग्दुष्टा दक्षा साध्वी प्रियंवदा ॥३॥**

पछि गएर हेलचक्र्याइँ गरिएको रोग समान पतिको काबु बाहिर हुन जान्छे । पतिको अनुकूल आचरण गर्ने, नराम्रो वचन नबोल्ने, घरका कामकाजमा चतुर, पवित्र आचरण भएकी, मीठो बोल्ने,...।

**आत्मगुप्ता स्वामिभक्ता देवता सा न मानुषी ॥४॥**

आफ्नो रक्षा गर्ने र पतिमा श्रद्धा गर्ने उनि त देवी नै हुन् मानिस होइनन् ।

**अनुकूलकलत्रो यस्तस्य स्वर्ग यहैव हि ।**
**प्रतिकूलकलत्रस्य नरको नात्र संशयः ॥५॥**

जसकी पत्नी अनुकूल छे उसका लागि यो लोक नै स्वर्ग हो भने प्रतिकूल पत्नी हुनेका लागि यो लोक नै नरक हो यसमा शङ्का छैन ।

**स्वर्गेऽपि दुर्लभो ह्येतदनुरागः परस्परम् ।**
**रक्त एको विरक्तोऽन्यस्तस्मात् कष्टतरं नु किम् ॥६॥**

परस्परको आकर्षण स्वर्गमा पनि दुर्लभ छ । एकमा आकर्षण भई अर्कोमा नहुनु जस्तो दुःखको कुरा के होला ? ।

**गृहवासः सुखार्थाय पत्नीमूलं गृहे सुखम् ।**
**सा पत्नी या विनीता स्याच्चितज्ञा वशवर्त्तिनी ॥७॥**

घरमा बस्नु सुखका लागि हो र घरको सुखको आधार पत्नी हो । पत्नी ती हुन् जो नम्र, पतिको मनको कुरा थाहा पाउने र उसका वशमा रहने हुन्छन् ।

**दुःखा ह्यन्या सदा खिन्ना चित्तभेदः परस्परम् ।**

**प्रतिकूलकलत्रस्य द्विदारस्य विशेषतः ॥८॥**

यसको विपरित जो पत्नी हुन्छे उ सदा दुःखी र चिन्तित हुन्छे । जसकी पत्नी प्रतिकूल छे वा विशेष गरी जसका दुई पत्नी छन् तिनको मन कहिल्यै आपसमा मिल्दैन ।

**योषित्सर्वा जलौकेव भूषणाच्छादनाशनैः ।**
**सुभृत्यापि कृता नित्यं पुरुषं ह्यपकर्षति ॥९॥**

हरेक स्त्री जूकाका समान हुन् । सधैं गहना, कपडा र उत्तम ऐश्वर्यले युक्त गरिएकी हुँदा पनि उ पतिलाई चुसिरहन्छे ।

**जलौका रक्तमादत्ते केवलं सा तपस्विनी ।**
**इतरा तु धनं वित्तं मांसं वीर्यं बलं सुखम् ॥१०॥**

बिचरा जूका त रगत मात्र चुस्दछ तर दोश्री (पत्नी) त पतिको धन, सम्पत्ति, मासु, वीर्य, बल र सुख नै चुस्दछे ।

**सशङ्का बालभावे तु यौवने विमुखी भवेत् ।**
**तृणवन्मन्यते पश्चाद् वृद्धभावे स्वकं पतिम् ॥११॥**

वाल्यावस्थामा उ पतिप्रति शङ्कालु बनिरहन्छे । यौवनमा उ पतिप्रति विमुख हुन्छे । त्यसपछि बुढ्यौलीमा त उ आफ्नो पतिलाई तृण बराबर मान्न थाल्दछे ।

**अनुकूला न वाग्दुष्टा दक्षा साध्वी पतिव्रता ।**
**एभिरेव गुणैर्युक्ता श्रीरेव स्त्री न संशयः ॥१२॥**

जो पत्नी पति अनुकूल, नराम्रो वचन नबोल्ने, घरका कामकाजमा दक्ष र पवित्र आचरण भएकी छे यी गुण भएकी स्त्री लक्ष्मी नै हुन्, यसमा शङ्का छैन ।

**या हृष्टा मनसा नित्यं स्थानमानविचक्षणा ।**
**भर्त्तुः प्रीतिकरी नित्यं सा भार्या हीतरा जरा ॥१३॥**

जो सधैं प्रसन्न रहन्छे, स्थान तथा मानका विषयमा चलाख छे, नित्य पतिको प्रसन्नतालाई उत्पन्न गर्दछे, उनी नै भार्या हुन् । यसभन्दा बाहेकका त (उमेर नपुग्दैका) बुढ्यौली हुन् ।

शिष्यो भार्या शिशुर्भ्राता पुत्रो दासः समाश्रितः ।
यस्यैतानि विनीतानि तस्य लोके हि गौरवम् ॥१४॥

जुन मानिसका शिष्य, पत्नी, बालक, भाई, छोरा, नोकर र आश्रित जन सबैका सबै नम्र छन् उसकै लोकमा गौरव हुन्छ ।

प्रथमा धर्मपत्नी च द्वितीया रतिवर्द्धिनी ।
दृष्टमेव फलं तत्र नादृष्टमुपजायते ॥१५॥

पहिली धर्मपत्नी हुन्छे भने दोश्री कामवासना बढाउने पत्नी हुन्छे । दोश्रीबाट देखिने (पुत्र आदि) फल उत्पन्न भएपनि नदेखिने (स्वर्ग आदि) फल भने उत्पन्न हुँदैन ।

धर्मपत्नी समाख्याता निर्द्दोषा यदि सा भवेत् ।
दोषे सति न दोषः स्यादन्या भार्या गुणान्विता ॥१६॥

यदि पत्नी निर्दोष छे भने उ धर्मपत्नी कहलाइन्छे, दोषी भए अर्की गुणी पत्नी ग्रहण गर्न दोष लाग्दैन ।

अदुष्टापतितां भार्यां यौवने यः परित्यजेत् ।
स जीवनान्ते स्त्रीत्वञ्च वन्ध्यत्वञ्च समाप्नुयात् ॥१७॥

जसले दोष नभएकी र पवित्र आचरणकी पत्नीलाई यौवनमा छोड्दछ उ मरेपछि बाँझी स्त्री भएर जन्मन्छ ।

दरिद्रं व्याधितं चैव भर्त्तारं याऽवमन्यते ।
शुनी गृध्री च मकरी जायते सा पुनः पुनः ॥१८॥

जो स्त्री दरिद्र र रोगी पतिको अपमान गर्दछे उ पटकपटक कुकुर्नी, गिद्धिनी र गोहिनीका रुपमा जन्मन्छे ।

मृते भर्त्तरि या नारी समारोहेद्धुताशनम् ।
सा भवेत्तु शुभाचारा स्वर्गलोके महीयते ॥१९॥

जो स्त्री पति मर्दा सती जान्छे उ पवित्र आचरण भएकी हुन्छे र स्वर्गमा महानता प्राप्त गर्दछे ।

**व्यालग्राही यथा ब्यालं बलादुद्धरते बिलात् ।**
**तथा सा पतिमुद्धृत्य तेनैव सह मोदते ॥२०॥**

सपेराले जसरी दुलोबाट बलपूर्वक सर्प निकाल्दछ, त्यसरी नै सति नारीले (अर्को जन्ममा) पति पाई उसँग आनन्दमा रहन्छे ।

॥ इति दाक्षे धर्मशास्त्रे चतुर्थोऽध्यायः ॥४॥
॥ मोहन प्रसाद सापकोटाबाट दक्षस्मृतिको चौथो अध्याय
नेपालीमा भावानुवाद गरेर सकिएको छ ॥

आदितः श्लोकानां समष्टयङ्काः-१०४+२०=१२४
शुरुदेखिको श्लोक सङ्ख्या : १२४

## ॥ अथ पञ्चमोऽध्यायः ॥
## (पाँचौं अध्याय)

**उक्तं शौचमशौचञ्च कार्यं त्याज्यं मनीषिभिः ।**
**विशेषार्थं तपोः किञ्चिद्वक्ष्यामि हितकाम्यया ॥१॥**

शौच र अशौचका बारेमा बताइ सकियो । विद्वानबाट शौच गरिनु पर्दछ, अशौच त्यागिनु पर्दछ । म जनहितको कामना गरी यी दुवैका बारेमा केही विशेष कुरा भन्नेछु ।

**शौचे यत्नः सदा कार्यः शौचमूलो द्विजः स्मृतः ।**
**शौचाचारविहीनस्य समस्ता निष्फलाः क्रियाः ॥२॥**

शौच गर्न सधैं प्रयाशरत रहनु पर्दछ किन कि शौचलाई द्विजको आधार मानिएको छ । जो शौच र आचारहीन छन्, तिनका सबै क्रियाकलाप निष्फल हुन्छन् ।

**शौचञ्च द्विविधं प्रोक्तं बाह्यमाभ्यन्तरन्तथा ।**
**मृज्जलाभ्यां स्मृतं बाह्यं भावशुद्धिस्तथान्तरम् ॥३॥**

शौच दुई थरी बताइएको छ बाह्य र आभ्यन्तर । बाह्य माटो र जलबाट गर्ने भनिएको छ भने विचार शुद्धिलाई आभ्यन्तर शौच भनिएको छ ।

**अशौचाद्धि वरं बाह्यं तस्मादाभ्यन्तरं वरम् ।**
**उभाभ्याञ्च शुचिर्यस्तु स शुचिर्नेतरः शुचिः ॥४॥**

अशौच भन्दा बाह्य शौच राम्रो त्यो भन्दा आभ्यन्तर शौच राम्रो । जो दुवैथरी शौचले पवित्र छ त्यही पवित्र हुन्छ अरु हुँदैनन् ।

**एका लिङ्गे गुदे तिस्रो दश वामकरे तथा ।**
**उभयोः सप्त दातव्या मृदस्तिस्रस्तु पादयोः ॥५॥**

(शौच गरेपछि) जननेन्द्रियमा एक पटक, मलद्वारमा तीन पटक, देब्रे हातमा दश पटक, दुवै हातमा सात पटक र गोडामा तीन पटक माटो लगाएर सफा गर्नू ।

**गृहस्थशौचमाख्यातं त्रिष्वन्येषु यथाक्रमम् ।**
**द्विगुणं त्रिगुणञ्चैव चतुर्थस्य चतुर्गुणम् ॥६॥**

गृहस्थका लागि एकोहोरो शौच र अन्य तीन (ब्रह्मचारी, वानप्रस्थ र सन्यासी) का लागि दोबर, तेबर र चौबर शौच बताइएको छ ।

**अर्द्धप्रसृतिमात्रन्तु प्रथमा मृत्तिका स्मृता ।**
**द्वितीया च तृतीया च तदर्द्धं परिकीर्तिता ॥७॥**

पहिलो पटकका लागि एक पसर तथा त्यसपछि दोश्रो र तेश्रो पटकका लागि त्यसको आधा माटो प्रयोग गर्नुपर्ने कुरा बताइएको छ ।

**लिङ्गेऽप्यत्र समाख्याता त्रिपर्वी पूर्य्यते यया ।**
**एतच्छौचं गृहस्थानां द्विगुणं ब्रह्मचारिणाम् ॥८॥**

जननेन्द्रिय शुद्धिका लागि पनि त्यति नै माटो भनिएको छ जतिले औंलाका तिनै आँख्ला भरिन्छ । यो गृहस्थीको शौच हो । ब्रह्मचारीले यसको दोबर गर्नू ।

**त्रिगुणन्तु वनस्थानां यतीनाञ्च चतुर्गुणम् ।**

**दातव्यमुदकन्तावन्मृदभावो यथा भवेत् ॥९॥**

वानप्रस्थीको तेबर र सन्यासीको चौबर हुन्छ । माटो नपाइए पानीले सफा गर्नू ।

**मृदा जलेन शुद्धिः स्यान्न क्लेशो न धनव्ययः ।**
**यस्य शौचेऽपि शैथिल्यं चित्तं तस्य परीक्षितम् ॥१०॥**

माटोपानीले सफा गर्दा न कष्ट हुन्छ न धन खर्च हुन्छ । यस्तोमा पनि जसले अल्छी गर्दछ उसको मन जाँची सकियो ।

**अन्यदेव दिवा शौचं रात्रावन्यद्विधीयते ।**
**अन्यदापत्सु विप्राणामन्यदेव ह्यनापदि ॥११॥**

ब्राह्मणका दिनमा एकथरी, रातमा अर्को थरी, विपतमा अर्कोथरी तथा सुखका बेला अर्कोथरी शौच हुन्छ ।

**दिवोदितस्य शौचस्य रात्रावर्द्धं विधीयते ।**
**तदर्द्धमातुरस्याहुस्त्वरायामर्द्धमध्वनि ॥१२॥**

दिनमा सूर्य उदाएपछि जति शौच गरिन्छ राती त्यसको आधा । रोगीका लागि त्यसको पनि आधा र यात्रामा हतारले गर्दा त्यसको पनि आधा शौच हुन्छ ।

**न्यूनाधिकं न कर्तव्यं शौचे शुद्धिमभीप्सिता ।**
**प्रायश्चित्तेन युज्येत विहितातिक्रमे कृते ॥१३॥**

शुद्धता चाहनेले शौच कमबढी नगर्नू । बताइएका शौच नमानेमा मानिस प्रायश्चित गर्न योग्य हुन्छ ।

॥ इति दाक्षे धर्मशास्त्रे पञ्चमोऽध्यायः ॥५॥
॥ मोहन प्रसाद सापकोटाबाट दक्षस्मृतिको पाँचौं अध्याय
नेपालीमा भावानुवाद गरेर सकिएको छ ॥



आदितः श्लोकानां समष्टयङ्काः-१२४+१३=१३७
शुरुदेखिको श्लोक सङ्ख्या : १३७



## ॥ अथ षष्ठोऽध्यायः ॥

सूतकं तु प्रवक्ष्यामि जन्ममृत्युसमुद्भवम् ।
यवज्जीवं तृतीयन्तु यथावदनुपूर्वशः ॥१॥

अब म जन्म र मरणबाट लाग्ने आशौच र तेश्रो आजन्म लाग्ने आशौचका बारेमा क्रमैले र यथोचित तरिकाले बताउँदछु ।

सद्यः शौचं तथैकाहो द्वित्रिचतुरहस्तथा ।
दशाहो द्वादशाहश्च पक्षो मासस्तथैव च ॥२॥
मरणान्तं तथा चान्यद्दशपक्षान्तु सूतके ।
उपन्यस्तक्रमेणैव वक्ष्याम्यहमशेषतः ॥३॥

तत्काल, एक दिनको, दुई दिनको, तीन दिनको, चार दिनको, दश दिनको, बाह्र दिनको, पन्ध्र दिनको, एक महिनाको, मृत्युपर्यन्तको र सूतकको गरी यी आशौचका दश पक्ष छन् । म बताइएका यी क्रम अनुसार नै यिनका बारेमा पूर्णरूपमा वर्णन गर्नेछु ।

ग्रन्थार्थतः विजानाति वेदमङ्गैः समन्वितम् ।
सकल्पं सरहस्यञ्च क्रियावांश्चेन्न सूतकी ॥४॥

कोही यदि अङ्ग, कल्प र रहस्य सहित वेद पाठ गरी अर्थ समेत जान्दछ र त्यसमा बताइएका कर्म गर्दछ भने त उसलाई जूठोसूतक नै लाग्दैन ।

राजर्त्विग्दीक्षितानाञ्च बाले देशान्तरे तथा ।
व्रतिनां सत्रिणाञ्चैव सद्यःशौचं विधीयते ॥५॥

राजा, ऋत्विजक, दीक्षा लिएको, बालक, विदेशमा गएको, व्रत बसिरहेको र ठूलो यज्ञमा बसिरहेकाका लागि तुरुन्त शुद्धि बताइएको छ ।

एकाहस्तु समाख्यातो योऽग्निवेदसमन्वितः ।
हीने हीनतरे चैव द्वित्रिचतुरहस्तथा ॥६॥

यज्ञाग्नि र वेदले समन्वितका लागि एक दिनको शौच र त्यसबाट हीन वा हीनतर हुनेका लागि दुई, तीन वा चार दिनको शौच भनिएको छ ।

जातिविप्रो दशाहेन द्वादशाहेन भूमिपः ।
वैश्यः पञ्चदशाहेन शूद्रो मासेन शुध्यति ॥७॥

जन्ममात्रले ब्राह्मण दश दिनमा, क्षत्रिय बाह्र दिनमा, वैश्य पन्ध्र दिनमा र शूद्र एक महिनामा शुद्ध हुन्छ ।

अस्नात्वा चाप्यहुत्वा च भुङ्क्तेदत्त्वा च यः पुनः ।
एवंविधस्य सर्वस्य सूतकं समुदाहृतम् ॥८॥

जो मानिस ननुहाई, होम नहाली र दान नदिई खान्छ, यस्ता प्रत्येक व्यक्तिका लागि जूठोसूतक बताइएको छ ।

व्याधितस्य कदर्यस्य ऋणग्रस्तस्य सर्वदा ।
क्रियाहीनस्य मूर्खस्य स्त्रीजितस्य विशेषतः ॥९॥

रोगी, कञ्जुस, ऋणले ग्रस्त, कर्महीन, अनपढ र विशेषरुपले स्त्रीको वशमा हुनेहरु सधैँ सूतकमा रहन्छन् ।

व्यसनासक्तचित्तस्य पराधीनस्य नित्यशः ।
श्रद्धात्यागविहीनस्य भस्मान्तं सूतकं भवेत् ॥१०॥

व्यसनमा आसक्त भएका, सधैँ अर्काका अधिनमा रहने तथा श्रद्धा र त्याग नगर्ने मानिसका लागि नमरेसम्म जूठोसूतक रहन्छ ।

न सूतकं कदाचिद् स्याद् यावज्जीवन्तु सूतकम् ।
एवं गुणविशेषेण सूतकं समुदाहृतम् ॥११॥

कसैका लागि कहिल्यै सूतक हुँदैन भने कसैका लागि आजीवन सूतक हुन्छ । यसरी प्रत्येकको गुणका आधारमा सूतक लाग्ने बताइएको छ ।

सूतके मृतके चैव तथा च मृतसूतके ।
एतत्संहतशौचानां मृतशौचेन शुध्यति ॥१२॥

सूतकमा जूठो वा जूठोमा सूतक परेर खप्टिँदा जूठो सकिएपछि शुद्धि हुन्छ ।

**दानं प्रतिग्रहो होमः स्वाध्यायश्च निवर्तते ।**
**दशाहात्तु परं शौचं विप्रोऽर्हति च धर्मवित् ॥१३॥**

(आशौचमा) दान दिन लिन, होम र स्वाध्याय गर्न बन्द हुन्छ । धर्मज्ञ ब्राह्मण दश दिन पछि शुद्धताका लागि योग्य हुन्छ ।

**दानञ्च विधिना देयं अशुभात्तारकं हि तत् ।**
**मृतकान्ते मृतो यस्तु सूतकान्ते च सूतकम् ॥१४॥**
**एतत्संहतशौचानां पूर्वाशौचेन शुध्यति ।**
**उभयत्र दशाहानि कुलस्यान्नं न भुज्यते ॥१५॥**

आशौचमा दान विधिपूर्वक दिनू किनकि त्यो अशुभबाट पार लगाउने हुन्छ । जो जूठोमा मर्दछन् वा सूतकमा जन्मन्छन् यस्तो जोडिएको आशौचमा पहिलो आशौच चोखिँदा दोश्रो चोखिन्छ । दुबै स्थितिमा दश दिनसम्म त्यो कुलको अन्न खाइँदैन ।

**चतुर्थेऽहनि कर्तव्यमस्थिसञ्चयनं द्विजैः ।**
**ततः सञ्चयनादूर्ध्वमङ्गस्पर्शो विधीयते ॥१६॥**

चौथो दिन ब्राह्मणबाट अस्थि सञ्चयन गरिन्छ । अस्थि सञ्चयन पछि अङ्गस्पर्श गरिन्छ ।

**वर्णानामानुलोम्येन स्त्रीणामेको यदा पतिः ।**
**दशषट्त्र्यहमेकाहः प्रसवे सूतकं भवेत् ॥१७॥**

सुल्टो क्रमले वर्णानुसार यदि स्त्रीहरुको एकै पति भए क्रमैले दश, छ, तीन र एक दिनको सूतक हुन्छ (ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र पत्नी) ।

**यज्ञकाले विवाहे च देशभङ्गे तथैव च ।**
**हूयमाने तथाग्नौ च नाशौचं मृतसूतके ॥१८॥**

यज्ञ भइरहेको बेलामा, विवाह भइरहँदा, देशमा आपद परिरहेको बेलामा र आगोमा होम गरिरहेको बेलामा जन्ममरणको आशौच हुँदैन ।

**स्वस्थकाले त्विदं सर्वमशौचं परिकीर्तितम् ।**

**आपद्गतस्य सर्वस्य सूतके न तु सूतकम् ॥१९॥**

यो सबै आशौच सामान्य अवस्थाका लागि बताइएको हो । आपत पर्दा त सबैलाई सूतकमा पनि सूतक लाग्दैन ।

॥ इति दाक्षे धर्मशास्त्रे षष्ठोऽध्यायः ॥६॥
॥ मोहन प्रसाद सापकोटाबाट दक्षस्मृतिको छैटौं अध्याय
नेपालीमा भावानुवाद गरेर सकिएको छ ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-१३७+१९=१५६
शुरुदेखिको श्लोक सङ्ख्या : १५६

## ॥ अथ सप्तमोऽध्यायः ॥

**लोको वशीकृतो येन येन चात्मा वशीकृतः ।**
**इन्द्रियार्थो जितो येन तं योगं प्रब्रवीम्यहम् ॥१॥**

जे मार्फत लोकलाई वशमा पार्ने गरिन्छ, जे मार्फत आत्मालाई वशमा पार्ने गरिन्छ, जे मार्फत इन्द्रियका विषयलाई जितिने गर्दछ, (अब) म त्यो योगका विषयमा बताउँदछु ।

**प्राणायामस्तथा ध्यानं प्रत्याहारस्तु धारणा ।**
**तर्कश्चैव समाधिश्च षडङ्गो योग उच्यते ॥२॥**

प्राणायाम, ध्यान, प्रत्याहार, धारणा, तर्क र समाधि यी छ६ अङ्ग भएकोलाई योग भनिन्छ ।

**नारण्यसेवनाद्योगो नानेकग्रन्थचिन्तनात् ।**
**व्रतैर्यज्ञैस्तपोभिश्च न योगः कस्यचिद्भवेत् ॥३॥**

वनवासले योग हुँदैन । न अनेक ग्रन्थको चिन्तनले योग हुन्छ न त व्रतयज्ञ वा तपले कसैको योग हुन्छ ।

**न च पथ्याशनाद्योगो न नासाग्रनिरीक्षणात् ।**
**न च शास्त्रातिरिक्तेन शौचेन स भवेत् क्वचित् ॥४॥**

न पथ्य भोजन मात्र खानाले, न नाकको टुप्पोमा दृष्टि टिकाउनाले न त शास्त्रमा बताइएको भन्दा बढी शौच गरेर नै कहिल्यै योग हुन सक्दछ ।

**न मौनमन्त्रकुहकैनरेकैः सुकृतैस्तथा ।**
**लोकयात्रावियुक्तस्य योगो भवति कस्यचित् ॥५॥**

न मौनताले, न मन्त्रादि पढेर, न राम्ररी गरिएका जादूटूनाले न त लोकयात्रा परित्याग गर्ने कुनै मानिसलाई नै योग हुन सक्दछ ।

**अभियोगात्तथाभ्यासात्तस्मिन्नेव तु निश्चयात् ।**
**पुनः पुनश्च निर्वेदाद्योगः सिध्यति नान्यथा ॥६॥**

योग त त्यसैमा राम्ररी लाग्नाले, अभ्यासले, त्यसमै गरिने दृढ अठोटले र पटकपटकको प्रयाशले मात्र सिद्ध हुन्छ अरु कुराले होइन ।

**आत्मचिन्ताविनोदेन शौचक्रीडनकेन च ।**
**सर्वभूतसमत्वेन योगः सिध्यति नान्यथा ॥७॥**

आफ्ना मानसिक चिन्ता हटाई पवित्रताले क्रिडा गर्दा र सबै प्राणीलाई उस्तै देख्नाले योग सिद्ध हुन्छ अरु कुनै उपायले सिद्ध हुँदैन ।

**यश्चात्मनि रतो नित्यमात्मक्रीडस्तथैव च ।**
**आत्मनिष्ठश्च सततमात्मन्येव स्वभावतः ॥८॥**
**रतश्चैव स्वयं तुश्चः सन्तुश्चो नान्यमानसः ।**
**आत्मन्येव सुतृप्तोहमसौ योगस्तस्य प्रसिध्यति ॥९॥**

जो नित्य आफैँ भित्र रम्दछ  र आफू भित्रै कीडा गर्दछ, आफू भित्रै स्थिति बनाइ रहेको छ, स्वभावले आफू भित्रै लीन छ, आफैं प्रसन्न छ, सन्तुष्ट छ, जसको मन अरु कुनै वस्तुप्रति जाँदैन र त्यो जो आफूभित्रै पूर्ण तृप्त छ त्यसैलाई योग सिद्ध हुन्छ ।

**सुप्तोऽपि योगयुक्तः स्याज्जाग्रच्चापि विशेषतः ।**
**ईदृक्चेष्टः स्मृतः श्रेष्ठो गरिष्ठो ब्रह्मवादिनाम् ॥१०॥**

जो सुत्दा पनि अफ विशेषतः जागा हुँदा योगमा जुटिरहन्छ यसरी चेष्टा गर्ने त्यो मानिस ब्रह्मवादिमध्येमा श्रेष्ठ र गरिष्ठ मानिएको छ ।

**य आत्मव्यतिरेकेण द्वितीयं नैव पश्यति ।**
**ब्रह्मीभूय स एवं हि दक्षपक्ष उदाहृतः ॥११॥**

जो मानिस यस संसारमा आत्माभन्दा फरक अरु केही देख्दैन, यसरी देख्ने भएको उ दक्षको मतमा ब्रह्मभूत भनिएको छ ।

**विषयासक्तचित्तो हि यतिर्मोक्षं न विन्दति ।**
**यत्नेन विषयासक्तिं तस्माद्योगी विवर्जयेत् ॥१२॥**

विषयमा आकर्षित चित्त हुने सन्यासीले मोक्ष पाउन सक्दैन त्यसैले योगीले प्रयास गरेर विषय आशक्ति छाडून् ।

**विषयेन्द्रीयसंयोगं केचिद्योगं वदन्ति हि ।**
**अधर्मो धर्मरूपेण गृहीतस्तैरपण्डितैः ॥१३॥**

कोही विषयका साथको इन्द्रियको संयोगलाई नै योग भन्दछन् । ती मूर्खद्वारा त अधर्मलाई नै धर्म भनी ग्रहण गरिएको छ ।

**मनसश्चात्मनश्चैव संयोगश्च तथापरे ।**
**उक्तानामधिका ह्येते केवलं योगवञ्चिताः ॥१४॥**

यसै गरी कोही अरु मन र आत्माको संयोगलाई योग भन्दछन् । ती पहिले भनिएका मूर्खभन्दा पनि अज्ञानी हुन् र केवल योगबाट वञ्चित हुन् ।

**वृत्तिहीनं मनः कृत्वा क्षेत्रज्ञं परमात्मनि ।**
**एकीकृत्य विमुच्येत योगोऽयं मुख्य उच्यते ॥१५॥**

मनलाई वृत्तिबाट हटाई जीवलाई परमात्मामा एकाकार गराई मानिस जीवन–मरणको बन्धनबाट मुक्त होस् यही नै मुख्य योग हो भनी बताइएको छ ।

**कषायमोहविक्षेपलज्जाशङ्कादिचेतसः ।**

**व्यापारास्तु समाख्यातास्तान् जित्वा वशमानयेत् ॥१६॥**

राग, मोह, चित्तको चञ्चलता, लाज, शङ्का आदिलाई चित्तको व्यापार भनिन्छ । मानिसले तिनलाई जितेर वशमा पारुन् ।

**कुटुम्बैः पञ्चभिर्ग्राम्यैः षष्ठस्तत्र महत्तरः ।**
**देवासुरमनुष्यैस्तु स जेतुं नैव शक्यते ॥१७॥**

पाँच साधारण इन्द्रियका साथ जुन छैटौं अति महान् मन छ त्यो देवता, राक्षस र मानिसद्वारा पनि जित्न सकिँदैन ।

**बलेन परराष्ट्राणि गृह्णन् शूरस्तु नोच्यते ।**
**जितो येनेन्द्रीयग्रामः स शूरः कथ्यते बुधैः ॥१८॥**

बलले अर्काको देश जित्नेलाई शूर भनिंदैन जसले इन्द्रियको समूह जितेको छ त्यो नै ज्ञानीबाट शूर कहलाइन्छ ।

**बहिर्मुखानि सर्वाणि कृत्वा चाभिमुखानि वै ।**
**सर्वञ्चैवेन्द्रियग्रामं मनश्चात्मनि योजयेत् ॥१९॥**

बहिर्मुखी यी सबै इन्द्रियलाई अन्तर्मुखी गरी यसलाई मनमा स्थापित गर्नू र मनलाई आत्मामा स्थापित गर्नू ।

**सर्वभावविनिर्मुक्तः क्षेत्रज्ञं ब्रह्मणि न्यसेत् ।**
**एतद्ध्यानञ्च योगश्च शेषाः स्युर्ग्रन्थविस्तराः ॥२०॥**

सबै भावबाट राम्ररी मुक्त भई मनुष्यले आत्मालाई ब्रह्ममा स्थापित गर्नू । यो नै ध्यान हो र यो नै योग हो । बाँकी कुरा त ग्रन्थ बढाउने कुरा मात्रै हुन् ।

**त्यक्त्वा विषयभोगांश्च मनो निश्चलतां गतम् ।**
**आत्मशक्तिस्वरूपेण समाधिः परिकीर्त्तितः ॥२१॥**

विषय भोगलाई छोडी निश्चलता प्राप्त गरेको तथा आत्माको शक्तिका रुपमा स्थित मनलाई समाधि भनिन्छ ।

**चतुर्णां सन्निकर्षेण पदं यत्तदशाश्वतम् ।**
**द्वयोस्तु संनिकर्षेण शाश्वतं ध्रुवमक्षयम् ॥२२॥**

योगका केवल चार अङ्ग (तर्क, प्राणायाम, प्रत्याहार र धारणा) को बढी संयोगले जुन पद पाइन्छ त्यो शास्वत होइन तर (ध्यान र समाधि) दुई पदको संयोगले प्राप्त हुने पद शास्वत, ध्रुव र अक्षय हो ।

**नास्ति सर्वलोकस्य तदस्तीति विरुध्यते ।**
**कथ्यमानं तथान्यस्य हृदये नावतिष्ठते ॥२३॥**

यो एक विरोधाभासपूर्ण कुरा हो की सबैका लागि जसको अस्तित्व छैन (योगीका लागि) त्यसको अस्तित्व छ । यस्तै, उपदेश गरिएको हुँदा पनि यो तत्व अन्य (अज्ञानी) का हृदयमा टिक्दैन ।

**स्वसंवेद्यं हि तद् ब्रह्म कुमारीमैथुनं यथा ।**
**अयोगी नैव जानाति जातान्धो हि यथा घटम् ॥२४॥**

कुमारीको मैथुनझैं ब्रह्म पनि आफूबाटै जान्न योग्य हुन्छ । योगी नहुनेले त्यो जान्न सक्दैन जसरी जन्मान्धले घडा देख्न सक्दैन ।

**नित्याभ्यसनशलिस्य सुसंवेद्यं हि तद्भवेत् ।**
**तत्सूक्ष्मत्वादनिर्देश्यं परं ब्रह्म सनातनम् ॥२५॥**

त्यो ब्रह्म नित्य अभ्यास गर्ने स्वभावका मानिसबाट नै राम्ररी जान्न योग्य छ । त्यो सनातन परम ब्रह्म आफ्नो सूक्ष्मताका कारण देखाउन योग्य छैन (सकिन्न) ।

**बुधस्त्वाभरणं भावं मनसालोचनं यथा ।**
**मन्यते स्त्री च मूर्खश्च तदेव  बहु मन्यते ॥२६॥**

मानसिक चिन्तन जस्तै ज्ञानी त त्यो ब्रह्मको अस्तितत्वलाई नै परिपूर्ण मान्दछन् । तर स्त्री र मूर्ख त साधारण आवरणलाई नै धेरै मान्दछन् ।

**सत्त्वोत्कटाः सुराश्चापि विषयेण वशीकृताः ।**

**प्रमादिभिः क्षुद्रसत्वैर्मानुषैरत्र का कथा ॥२७॥**

सत्वमा धेरै ठूला देवता पनि विषयबाट वशमा गरिए भने प्रमादी र क्षुद्र बल भएका मानिसको के कुरा गर्नु ?।

**तस्मात्यक्तकषायेण कर्त्तव्यं दण्डधारणम् ।**
**इतरस्तु न शक्नोति विषयैरभिभूयते ॥२८॥**

यसैले रागलाई छोडी दण्ड धारण गर्नू । जसले राग छोड्दैन उसले योग  गर्न नै सक्दैन, उ त विषयको वशमा हुन जान्छ ।

**न स्थिरं क्षणमप्येकमुदकं हि यथोर्मिभिः ।**
**वाताहतं तथा चित्तं तस्मात्तस्य न विश्वसेत् ॥२९॥**

जसरी हावाले हानिएको जल एकछिन पनि स्थिर हुन सक्दैन त्यसरी नै रागले ढाकेको चित्त पनि स्थिर हुन सक्दैन । त्यसैले त्यस्तो चित्तको विश्वास नगर्नू ।

**त्रिदण्डव्यपदेशेन जीवन्ति बहवो नराः ।**
**यो हि ब्रह्म न जानाति न त्रिदण्डार्ह एव सः ॥३०॥**

त्रिदण्डको बहानामा (सन्यासीको भेषमा) धेरै व्यक्ति आफ्नो पेट पालिरहेका छन् । जो ब्रह्मलाई जान्दैन उ त त्रिदण्डका लागि योग्य नै हुँदैन ।

**ब्रह्मचर्यं सदा रक्षेदष्टधा मैथुनं पृथक् ।**
**स्मरणं कीर्त्तनं केलिः प्रेक्षणं गुह्यभाषणम् ॥३१॥**
**सङ्कल्पोऽध्यवसायश्च क्रियानिष्पत्तिरेव च ।**
**एतन्मैथुनमष्टाङ्गं प्रवदन्ति मनीषिणः ॥३२॥**

ब्रह्मचर्यको सधैं रक्षा गर्नू । मैथुन आठ थरी हुन्छन् । स्त्रीलाई सम्भिनु,  स्त्रीसँग कुराकानी गर्नु, स्त्रीसँग खेल्नु, स्त्रीलाई हेरिरहनु, स्त्रीसँग लुकेर कुरा गर्नु, स्त्रीलाई सहवास गर्ने कुरा सोच्नु, स्त्रीलाई सहवास गर्ने प्रयाश गर्नु र स्त्रीलाई सहवास गर्नु । यसरी यी मैथुनका आठ प्रकार हुन् भनी विद्वानहरू बताउँछन् । (अन्तिम बाहेककालाई आजकल आशय करणी भनिन्छ) ।

**न धातव्यं न वक्तव्यं न कर्त्तव्यं कदाचन ।**

**एतैः सर्वैः सुसम्पन्नो यतिर्भवति नेतरः ॥३३॥**

न स्त्रीको ध्यान गर्नु हुन्छ, न उनीसँग कुराकानी न त कहिल्यै सम्भोग नै गर्न हुन्छ । यी कुराले राम्ररी सम्पन्न भएको (बार्ने) व्यक्ति नै सन्यासी हुन्छ, अरु होइन ।

**पारिव्रज्यं गृहीत्वा च यो धर्मे नावतिष्ठते ।**
**श्वपदेनाङ्कयित्वा तं राजा शीघ्रं प्रवासयेत् ॥३४॥**

सन्यास लिएर पनि जो आफ्नो धर्ममा टिक्दैन, त्यस्ताको निधारमा राजाले कुकुरको पाइला बनाएर (डामेर) तुरुन्त देशनिकाला गर्नू ।

**एको भिक्षुर्यथोक्तस्तु द्वौ चैव मिथुनं स्मृतम् ।**
**त्रयो ग्रामस्तथा ख्यात ऊर्द्ध्वन्तु नगरायते ॥३५॥**

भिक्षु यदि एक्लै बसे मात्र उ यथोक्तरुपले भिक्षु हुन्छ । दुई भिक्षु सँगै बसे मिथुन र तीन भिक्षु सँगै बसे त्यसलाई ग्राम भनिन्छ भने त्यसभन्दा बढी बसे नगर हुन्छ ।

**नगरं हि न कर्त्तव्यं ग्रामो वा मिथुनं तथा ।**
**एतत्त्रयं प्रकुर्व्वाणः स्वधर्माच्च्यवते यतिः ॥३६॥**

सन्यासीहरुले नगर, ग्राम वा मिथुन नबन्नू । यी तीन बने सन्यासी स्वधर्मबाट भ्रष्ट हुन्छ ।

**राजवार्त्तादि तेषान्तु भिक्षावार्त्ता परस्परम् ।**
**स्नेहपैशून्यमात्सर्यं सन्निकर्षादसंशयम् ॥३७॥**

तिनीहरु आपसमा नजिकै हुँदा निसन्देह राजाका विषयमा चर्चा, भिक्षाका बारेमा कुराकानी, राग, चुक्ली र मात्सर्यता उत्पन्न हुन्छ ।

**लाभपूजानिमित्तं हि व्याख्यानं शिष्यसंग्रहः ।**
**एते चान्ये च बहवः प्रपञ्चाः कुतपस्विनाम् ॥३८॥**

उनिहरुमार्फत हुने शास्त्रको व्याख्या आफ्नो नाम र पूजाका निमित्त मात्र नै हुन्छ । ती यसैले चेलाहरु जम्मा गर्दछन् । कुतपस्वीका यी र यस्तै अरु प्रपञ्च हुने गर्दछन् ।

**ध्यानं शौचं तथा भिक्षा नित्यमेकान्तशीलता ।**
**भिक्षोश्चत्वारि कर्माणि पञ्चमो नोपपद्यते ॥३९॥**

ध्यान, शौच, भिक्षा र सधैंको एकान्तशलिता सन्यासीका यी चार नै कर्म हुन्, पाँचौं कुनै होइन ।

**तपोजपैः कृषीभूतो व्याधितो वसथावहः ।**
**वृद्धो ग्रहगृहीतश्च यश्चान्यो विकलेन्द्रीयः ॥४०॥**
**नीरुजश्च युवा चैव भिक्षुर्नावसथावहः ।**
**स दूषयति तत्स्थानं बुधान् पीडयतीति च ॥४१॥**

जो जपतप आदिले दुब्लाएको छ, जो रोगले पिडीत छ, जो बूढो छ र जो ग्रहले पिडित छ त्यो सन्यासी भने घरमा बस्न सक्दछ । जुन सन्यासीका इन्द्रियमा केही कमी छैन, जो निरोगी छ र जवान छ त्यो भिक्षु घरमा बस्न सक्दैन, घरमा बास गरे उसले त्यो स्थानलाई नै दूषित गर्दछ र विद्वानलाई समेत पीडित गर्दछ ।

**नीरुजश्च युवा चैव ब्रह्मचर्य्याद्विनश्यति ।**
**ब्रह्मचर्य्याद्विनष्टस्तु कुलञ्चैव तु नाशयेत् ॥४२॥**

निरोगी र युवा भिक्षु यदि घरमा बसे उ ब्रह्मचर्यबाट पतित हुन्छ । ब्रह्मचर्यबाट पतित भई उसले आफ्नो कुललाई पनि नष्ट पार्दछ ।

**वसन्नावसथे भिक्षुर्मैथुनं यदि सेवते ।**
**तस्यावसथनाथस्य मूलान्यपि निकृन्तति ॥४३॥**

घरमा बास बसी मैथुन समेत गर्दछ भने त त्यो घरका मालिकको जरो पनि काट्दछ ।

**आश्रमे तु यतिर्यस्य मुहूर्त्तमपि विश्रमेत् ।**
**किन्तस्यान्येन धर्मेण कृतकृत्योऽभिजायते ॥४४॥**

जसका घरमा सन्यासी एक छिनका लागि मात्र भएपनि विश्राम गर्दछन् उसलाई अरु धर्मको पालनाको के मतलब ? उ त यसैले नै कृतकृत्य हुन्छ ।

**समितं गद् गृहस्थेन पापमामरणान्तिकम् ।**

स निर्दहति तत् सर्व्वमेकरात्रोषितो यतिः ॥४५॥

नमरिन्जेलसम्म गृहस्थले जेजति पाप जम्मा पारेको हुन्छ एक रातभर वास बस्ने सन्यासीले ती सबैका सबै पाप जलाएर खरानी बनाइ दिन्छ ।

व्यानयोगपरिश्रान्तं यस्तु भोजयते यतिम् ।
निखिलं भोजितं तेन त्रलोक्यं सचराचरम् ॥४६॥

ध्यान र योगले गर्दा थकित सन्यासीलाई जो गृहस्थ खुवाउँदछ, उसले त चराचरले युक्त त्रिलोकलाई नै भोजन गराएसरह हुन्छ ।

यस्मिन् देशे वसेद्योगो ध्यानयोगविचक्षणः ।
सोऽपि देशो भवेत् पूतः किं पुनस्तस्य बान्धवाः ॥४७॥

ध्यान र योगले निपुण योगी जहाँ बस्दछन् त्यो पनि पवित्र हुन्छ । उसका बन्धुबान्धवको त के कुरा ? ।

द्वैतश्चैव तथाद्वैतं द्वैताद्वैतं तथैव च ।
न द्वैतं नापि चाद्वैतमित्येतत् पारमार्थिकम् ॥४८॥

द्वैत, अद्वैत र द्वैताद्वैत -यि तीन विचारधारा छन् । न द्वैत छ, न अद्वैत नै-यही नै मारमार्थिक हो । अर्थात् द्वैताद्वैत नै सत्य हो ।

नाहं नैवान्यसम्बन्धो ब्रह्मभावेन भावितः ।
ईदृशायामवस्थायामवाप्यं परमं पदम् ॥४९॥

एक-ब्रह्मले युक्त (द्वैत) मानिस यही सोच्दछ कि- न म हुँ, न नै मेरो कसैसँग सम्बन्ध छ । यस्तो अवस्थामा (उ) मोक्ष प्राप्त गर्न योग्य हुन्छ ।

द्वैतपक्षः समाख्यातो येऽद्वैते तु व्यवस्थिताः ।
अद्वैतिनां प्रवक्ष्यामि यथा धर्मः सुनिश्चितः ॥५०॥

द्वैतपक्षका बारेमा बताइयो । जो अद्वैतमा व्यवस्थित भएका सुनिश्चित धर्मका विषय छन् तिनका बारेमा वर्णन गर्नेछु ।

**तत्रात्मव्यतिरेकेण द्वितीयं यदि पश्यति ।**
**ततः शास्त्राण्यधीयन्ते श्रूयन्ते ग्रन्थसञ्चयाः ॥५१॥**

यदि मानिसले यो संसारमा आत्मा (ब्रह्म) बाहेक अरु दोश्रो कुरा देख्दछ भने उसले शास्त्र पढ्नु र अनेक ग्रन्थ सुन्नु पर्दछ ।

**दक्षशास्त्रं यथा प्रोक्तमशेषाश्रममुत्तमम् ।**
**अधीयते तु ये विप्रास्ते यान्त्यमरलोकताम् ॥५२॥**

जो ब्राह्मण, माथि उल्लेखित, सबै आश्रमका लागि उत्तम, दक्षले बताएको धर्मशास्त्रको अध्ययन गर्दछ, उसले देवलोक प्राप्त गर्दछ ।

**इदन्तु यः पठेद्भक्त्या श्रृणुयादधमोऽपि वा ।**
**स पुत्रपौत्रपशुमान् कीर्त्तिञ्च समवाप्नुयात् ॥५३॥**

यो धर्मशास्त्रलाई कसैले भक्तिपूर्वक पढेमा वा कुनै अधमले सुनेमा पनि उ छोरा, नाती र पुशले सम्पन्न हुनेछ ।

**श्रावयित्वा त्विदं शास्त्रंश्राद्धकालेऽपि वै द्विजाः ।**
**अक्षयं भवति श्राद्धं पितृभ्यश्चोपजायते ॥५४॥**

हे ब्राह्मणजन ! श्राद्धकालमा जसले यो शास्त्रलाई सुनाउँदछ उसले गरेको त्यो श्राद्ध अक्षय भई पितृलाई प्राप्त हुन्छ ।

॥ इति दाक्षे धर्मशास्त्रे सप्तमोऽध्यायः ॥७॥
॥ मोहन प्रसाद सापकोटाबाट दक्षस्मृतिको सातौं अध्याय
नेपालीमा भावानुवाद गरेर सकिएको छ ॥



आदितः श्लोकानां समष्टयङ्काः-१५६+५४=२१०
शुरुदेखिको श्लोक सङ्ख्या : २१०



॥ समाप्ता चेयं दक्षस्मृतिः ॥
॥ दक्षस्मृतिको भावानुवाद सकियो ॥

